❀ ओ३म् ❀

# नित्यकर्मविधिः

नं० २

## अग्निहोत्रम्



प्रतिदिन होम गर्ने विधि र
वेद मन्त्रको गोर्खा भाषा मा संक्षिप्त व्याख्या।

---

लेखक तथा प्रकाशक :—

**शुक्रराज शास्त्री विद्याभूषण।**

१९२८

प्रथम संस्करण ५०००



मूल्य =)

# एक निवेदन ।



## होम गर्नामा वेदमन्त्र र अरु धर्मशास्त्रको प्रमाण ।



सायं सायं गृहपतिर्नो अग्निः प्रातः प्रातः सौमनस्य

दाता । वसोर्वसोर्वसुदान एधि वयं त्वेन्धानास्तन्वं

पुषेम ॥ १ ॥

अर्थः—( अग्निः ) यो प्रत्यक्ष आगो ( प्रातः प्रातः ) बेहान २ र ( सायं सायम् ) बेलुका २ को ( गृहपतिः ) घरलाई पालन गर्ने हो अर्थात् आगो लेनै बेहान र बेलुका सबै खाने कुरो पकाई मनुष्य लाई रक्षा गर्छ, त्यो आगो ( सौमनस्य ) आरोग्यको र आनन्द सुखको तथा ( बसोः बसोः ) उत्तम श्रेष्ठ पदार्थ हरूको ( दाता ) दान दिने हुन्, अर्थात् संसार मा आगोको सहायता ले नै सब प्रकारको उत्तम २ पदार्थ हरू तयार हुन्छन्; यसै निमित्त त्यो प्रत्यक्ष आगो ( वसुदानः ) बसु-धन लाई दिने हो, यस् कारण हे भगवान् परमेश्वर ! हजूरको कृपाले त्यस्ता सुखदायी

अग्नि हामी हरू लाई ( एधि ) प्राप्त होस् ( व्याकरणको व्यत्यय नियम ले यस् पदको यसै अर्थ हुन्छ ) अरू [ वयम ] हामी हरू ( त्वा ) त्यै आनन्द दिने आगो लाई (इन्धानाः) प्रज्वलित प्रकाश गर्दै ( तन्वम् ) आफ्नु शरीर लाई [ पुषेम ] पुष्ट गरून्, अर्थात् सधैं वेहान र वेलुका होम गर्दै आरोग्यता लाई लाभ गर्न शकुन ॥ १ ॥

प्रातः प्रातर्गृहपतिर्नो अग्निः सायं सायं सौमनस्य दाता। वसोर्वसोर्वसुदान एधीन्धानास्त्वा शतहिमा ऋधेम ॥ २ ॥

( अथर्व० कां० १९ । अनु० ७ । मं० ३.४ )

अर्थः—यस् मन्त्रको अर्थ ( एधीन्धानास्त्वा ) सम्म पूर्व मन्त्र को जस्तै छ, किन्तु यति विशेष छ, यस् रीतले हामी हरू अग्नि होत्र गर्दै [ शतहिमाः ] से हिंउदो मास आउने साल सम्म अर्थात् से वर्ष [ १०० ] सम्म [ ऋधेम ] बढुन्, अभिप्राय यो छ कि यस् प्रकार होम गर्ना ले कहिले पनी कुनै प्रकारको रोग-व्याधि र हानि न होस् ॥ २ ॥

अग्नौ प्रास्ताहुतिः सम्यगादित्यमुपतिष्ठते।
आदित्याज्जायते वृष्टिः वृष्टेरन्नं ततः प्रजाः ॥३॥

( मनुः अ० ३ । ७६ )

आगो मा वेदमन्त्र द्वारा हालेको आहुति सूर्य्य काहां पुग्द छ, पछि सूर्य्य भगवान द्वारा वर्षा हुन्छ, त्यस्

पछि अन्नको उत्पत्ति हुन्छ, फेरी अन्न ले सन्तान उत्पत्ति हुन्छ ॥ ३ ॥

अग्निहोत्रं च जुहुयादाद्यन्ते द्यु निशोः सदा ।
दर्शेन चार्द्ध मासान्ते पौर्णमासेन चैव हि ॥४॥
( मनुः अ० ४ । )

वेहान र वेलुका सदैं होम गर्नु पर्छ, आधा २ महीनाको अन्तमा दर्शयज्ञ र पौर्णमास यज्ञ गर्नु पर्छ ॥ ४ ॥

सन्ध्यां प्राक् प्रातरेवेह तिष्ठेदासूर्य्यदर्शनात् ।
अग्निकार्य्यं ततः कुर्य्यात् सन्ध्ययोरुभयोरपि ॥५॥
( याज्ञवल्क्य )

अर्थः—सूर्य्योदय लाई देखेर वेहान भगवान्को संध्या अर्थात् ध्यान गर्नु पर्छ, त्यस् पछी वेहान र वेलुका दुवै सन्ध्या वेलामा अग्नि होत्र गर्नु पर्छ ॥ ५ ॥

इनी प्रमाण हरू वाट सिद्ध हुन्छ कि वेहान र वेलुका सवै द्विज नामधारी मानीस ले होम गर्नु पर्छ, यदि दुवै वेला मा फुरसत छैन भने वेहान एकबार ता अवश्य अग्निहोत्र गर्नु पर्छ ।

यस् पुस्तक लाई उत्तम रीति वाट २-४ पल्ट पढ़ी कन वेद मन्त्रको अर्थ, विधि र प्रयोजन जानी कन होम गर्ना मा अभ्यास गर्नु पर्छ ।

## अग्निहोत्रको प्रयोजन ।

(१) अग्ने र्वै धूमो जायते धूमादभ्रम् अभ्राद्व ष्टिरिति ॥१॥
( शतपथ )

भावार्थ :—होम बाट प्रशस्त धुंवा उत्पन्न हुन्छ, धुवां ले मेघ, मेघ बाट वर्षा हुन्छ, अग्नि होत्र नै अन्न आदि फल मूल उत्पन्न गर्ने साधन हो। आज काल मा होम गर्ने नियम न हुनाले नै ठाउं २ मा सदैं अकाल पर्दै छ लाखौं अनाथ र गरीब हरू मर्दै छन, अहो दुःख ! ॥१॥

(२) द्वितीय प्रयोजन यो छ कि जहां दुर्गन्ध-मल मूत्र द्वारा दूपित स्थान हुन्छ वहां अनेक प्रकारको रोग उत्पन्न हुन्छन, आजकाल होमको चलन एक दम रुकेको हुनाले नाना प्रकारको प्लेग, इन्फ्लुएन्जा आदि रोग सर्वत्र संसार मा फैली रहेकाछन, अग्नि होत्र नै सर्व रोग शान्तिकारक हो ॥ २ ॥

(३) तेस्रो प्रयोजन ठुलो चार प्रतिज्ञा गर्नु हो, होम गर्ने वेलामा प्रत्येक मन्त्रको अन्त मा 'स्वाहा' यो शब्द आउन्छ, यस्को अर्थ मा प्रमाण :—

स्वाहाकृतयः सु-आह इति वा। स्वा वाग् आह इति वा। स्वं प्राह इति वा। स्वाऽऽहुतं हविर्जुहो-तीति वा॥

( निरुक्त अ० ८। खं० २० )

यस् "स्वाहा" शब्दको चार अर्थ ले चार प्रतिज्ञा हुन्छन् :—

(अ) सु+आह=स्वाहा, अर्थात् परस्पर भाई २ हरू मा प्रेम युक्त कल्याणकारी सुन्दर वचन मात्रै को उच्चारण गर्नु, हानि र अप्रिय लाग्ने कुरा कहिले पनी न भन्नु।

(आ) स्वा+(वाग्) आह=स्वाहा, अथात् जस्तो भीत्र

अन्तःकरण मा विचार छ उस्तै सत्य र आफ्नु वाणी ले उच्चारण गर्नु, जस्तो आफ्नु वाणी ले उच्चारण गर्नु उस्तै कर्म ले पनी गर्नु, अर्थात् झुठा कुरा कहिले पनी न भन्नु, सदैं सत्यभाषण गर्नु ।

(इ) स्वं+आह=स्वाहा, अर्थात् आफ्नै वस्तु लाई मात्रै 'यो मेरो चीज हो' भन्नु पर्छ, आर्काको चीज हरू लाई आफ्नु न भन्नु, न तेस्मा लोभ गर्नु ।

(इ) स्व+आहुत (हविः जुहोति इति वा)=स्वाहा, अर्थात् यस् संसार मा सवैको उपकारको उद्देश ले घृत-सामग्री आदि पदार्थ हरू लाई आगो मा मन्त्र ले होम गर्नु 'स्वाहा' को अर्थ हो ।

(४) होमको चौथो प्रयोजन त्याग र उपकार हो, होम गर्ने वेलामा ठांउ २ मा आउंछ कि—

ओं अग्नये स्वाहा । इदं अग्नये इदं न मम । ओं सोमाय स्वाहा । इदं सोमाय इदं न मम इत्यादि ॥
(यजुः अ० २२ । मन्त्र २७ ॥)

यस्को मतलब यो छ कि—हे सब ठाऊं मा वास गर्ने सर्वव्यापी सर्वज्ञ भगवान् । म सित भयेका इनी सवै चीज वस्तु हरू 'अग्नि-सोम' नामक हजूरको नै हुन् (इदं न मम) अर्थात् इनी पदार्थ हरू मेरो होईनन् । अभिप्राय यो छ कि—जत्ति सांसारिक सुख दिने श्री सम्पत्ति छन् उस वाट घमण्ड अभिमान न गरी, इनी सवै चीज हरू भगवान्को समझी, उनैका नाम स्मरण गरी, त्याग भाव हृदय माराखी,

आगो मा घीऊको आहुति दिनु पर्ने नियम हो। यस्तो त्याग भाव लाई सबै मानीस हरू ले मनमा राखी इनी सबै पदार्थ हरू आर्का लाई उपकार गर्ना का उद्देश ले त्याग निमित्त नै हुन् भन्ने विचार गर्नु भयो भने यस् संसार मा कहिले पनी मानीस हरू मा पारस्परिक ( आपस्ता मा ) विद्रोह, लड़ाई झगड़ा हरू हुने थियेनन्, न एक राजाको अरु राजा-सित लड़ाई हुने थियो, न प्रजा हरू मा केही झगड़ा हुने थियो। गत जर्मन युद्ध पनी त्याग भाव न हुनाले नै आप-स्ताको घमण्ड ले भयेको थियो। अविद्याको प्रताप ले यस्तो त्याग भाव उत्पन्न गराउने होमको नियम छूटयो, यसै कारण आज भोली आफुसित भयेको त्याग गर्नु ता एका तिर छ, आर्कासित भयेको पदार्थ, धन आदि वस्तु मा-थी पनी अनेक प्रकारको लोभ, छल, कपट गरी ठुलो परा-क्रमी पुरुष ले सानु शक्तिहीन अनाथ दीन गरीब लाई, धनी ले निर्धन लाई, बुद्धिमान् ले मूर्ख लाई दुःख दियेर, मारेर काटेर प्राण लियेर पनी आर्काको वस्तु हरू छिन्दै लूट दै छन्।

त्याग भाव लाई उत्पन्न गर्ने, सबै लाई मित्र बनाउने, आर्का लाई उपकार गराउने, अभिमान लाई छुडाउने होमको नियम न हुना ले नै इनी माथी लेखीयाका सबै लड़ाई, झगड़ा, लूट, मार, काट, ईर्ष्या-द्वेष, लोभ-मोह, अभिमान, घमण्ड, छल, कपट, ठगने, ठगाउने अनर्थ, अत्याचार आदि आज सम्म हुन्दै छन्, पछी पनी यदि यस्तै कुचाल चल्यो भने यस्तै दुःखदायी अशुभ परिणाम हुने छन्।

यस् कारण मेरो द्विज-हिन्दु सनातनधर्मी भाई हरू हो ! आउनु होस्, हामी तपाईं मिली जुली, परस्पर मित्र भाव राखी, अन्तर्यामी भगवान् लाई मन मा चिताई, लोभ लालच आदि लाई हटाई, त्याग र उपकारको उद्देश ले आजै देखी वैदिक होम गर्ने अभ्यास गरुन्, जस् बाट सबै भाई मा मित्रताको भाव बढ़ी कन सबै भाई हरू आनन्द साथ निर्विघ्न व्याधि रहित शत वर्ष सम्म जीउन शकुन् भन्ने विचार ले मैले यो वेद मन्त्र बाट होम गर्ने वेद-विहित सानु किताब बनायेको छु। सर्वव्यापक, सर्वज्ञ, सर्व नियन्ता, सर्वपिता भगवान परमेश्वर मेरो यो इच्छा पूर्ण गरोस्।

इति।

शुक्रराज शास्त्री।



# अथेश्वरस्तुतिप्रार्थनोपासना:

## अथाग्निहोत्रम् ।

---

विधि :—आरम्भ मा सर्वपिता भगवान् लाई मन मा स्मरण गरी तल लेखीयाका ८ वेद मन्त्र हरू बाट भगवान्-को स्तुति प्रार्थना र उपासना गर्नु पर्छ :—

ओ३म् विश्वानि देव सवितर्दुरितानि परासुव ।
यद्भद्रं तन्न आसुव ॥ १ ॥

( यजुः अध्याय ३० । मन्त्र ३ ॥ )

इनी प्रार्थना मन्त्र हरूको संक्षिप्त भावार्थ:—

हे देव परमेश्वर । सबै दुःख दिने दुर्गुण पाप लाई नाश गरी जुन् भद्र कल्याणकारी पदार्थ छन् तिनी पदार्थ हरू कन हामी लाई हजूर बाट प्राप्तिगरी बक्स्योस् ॥ १ ॥

हिरण्यगर्भः समवर्त्तताग्रे भूतस्य जातः पतिरेक आसीत् ।
स दाधार पृथिवींद्यामुतेमां कस्मै देवाय हविषा विधेम॥२॥

( यजुः अ० १३ । मंत्र ४ )

जो सब जगत्को मालिक परमेश्वर सबै भन्दा अघाड़ी थियो, उनै भगवान् ले इनी सबै पृथिवी आकाश हरू धारण गरी राखे का छन्, त्यस्ता देव लाई हामी हरू ले योगाभ्यास गरी प्राप्त गरुन् ॥ २ ॥

य आत्मदा बलदा यस्य विश्व उपासते प्रशिषं यस्य देवाः । यस्य च्छायाऽमृतं यस्य मृत्युः कस्मै देवाय हविषा विधेम ॥ ३ ॥

( यजुः अ० २५ । मंत्र १३ )

जो भगवान् हामीहरूलाई आत्मिक र शारीरिक वल दिने हुन् , जसको आदेश आज्ञा सबै विद्वान् धर्मात्मा हरू ले पालन गर्छन्, जस् को आश्रय नै अमृत अर्थात् मोक्षरूप हो, अरु जस् को आज्ञा विरुद्ध गर्नु नै मृत्यु—नरकरूप छ त्यस् दिव्य गुण युक्त भयेका देव भगवान् लाई हामी हरू ले अन्तःकरण वाट प्राप्ति गरून् ॥३ ॥

यः प्राणतो निमिषतो महित्वैक इद्राजा जगतो बभूव । य ईशे अस्य द्विपदश्चतुष्पदः कस्मै देवाय हविषा विधेम ॥४॥

( यजुः अ० २३ । मन्त्र ३ )

जो जीवन धारण गर्ने र नगर्ने पदार्थ हरूको राजा थियो, जो ऐले पनी दुई र चार खुट्टा भयेका प्राणी हरूको मालिक छ, त्यस्ता देव लाई हामी हरू ले योगाभ्यास द्वारा भक्तिगरी प्राप्ति गरून् ॥ ४ ॥

येन द्यौरुग्रा पृथिवी च दृढा येन स्वस्तभितं येन नाकः । यो अन्तरिक्षे रजसो विमानः कस्मै देवाय हविषा विधेम ॥५॥

( यजुः अ० ३२ । मन्त्र ६ )

जस् ले सूर्य्य, आकाश, पृथिवी आदि नियमरूप ले स्तम्भित अर्थात स्थिर गरी राखेका छन, जसले आकाश र सव लोक लोकान्तर हरू विशेष मानयुक्त गरी राखे का छन, त्यस्ता भगवान्को प्राप्ति निमित्त हामी हरूले सबै सामर्थ्य वाट श्रद्धा भक्ति गरुन् ॥ ५ ॥

प्रजापते न त्वदेतान्यन्यो विश्वा जातानि परिता बभूव ।
यत्कामास्ते जुहुमस्तन्नो अस्तु वयं स्याम पतयो रयीणाम् ॥६

(ऋ० मं० १० । सू० १२१ । मन्त्र १० ॥)

हे परब्रह्म परमात्मन् ! हजूर लाई छाड़ी अरु कोई सामर्थ्यवान् शक्तिशाली छैन, हजूरको दया दृष्टि ले हामी हरू को सबै कामना सिद्ध होस्, जस् वाट हामी हरू धन ऐश्वर्य्य आदिको मालिक हुन शकुन् ॥ ६ ॥

स नो वन्धुर्जनिता स विधाता धामानि वेद भुव-
नानि विश्वा । यत्र देवा अमृतमानशानास्तृतीये
धामन्नध्यैरयन्त ॥ ७ ॥

(यजुः अ० ३२ । मंत्र १० ॥)

जस् ले वन्धु भाईको समान हामी हरू लाई सुख दिन्छ, जस् ले सबै संसार लाई आफ्ना सर्वज्ञता ले जान्दछ, जहां दुःख रहित मोक्ष रूप भगवान् माथी मुक्त जीवात्मा हरू

स्वेच्छापूर्वक भ्रमण गर्छन, त्यसै भगवान् को स्तुति उपासना गर्नु पर्छ ॥ ७ ॥

अग्ने नय सुपथा राये अस्मान् विश्वानि देव वयुनानि विद्वान्। युयोध्यस्मज्जुहुराणमेनो भूयिष्ठान्ते नम उक्तिं विधेम ॥ ८ ॥

(यजुः अ० ४० । मंत्र १६ ॥)

हे अग्ने ज्ञानस्वरूप परमेश्वर। हामी हरू लाई सकल ऐश्वर्य्य आदि धार्मिक मार्ग बाट प्राप्त गराई बक्स्योस्, अरू हामी हरूको जुन् कुटिल पाप कर्म हरू छन् तिनी लाई नाश गरी बक्स्योस्, हामी हरू हजूर को सदैं नाम स्मरणगरी नम्रतापूर्वक स्तुति उपासना गरून् ॥ ८ ॥

आठौं प्रार्थना मन्त्र र अर्थ समाप्त भयो।

## अथ आचमन गर्ने मन्त्रः—

ओं अमृतोपस्तरणमसि स्वाहा।

ओं अमृतापिधानमसि स्वाहा।

ओं सत्यं यशः श्रीर्मयि श्रीः श्रयतां स्वाहा।

( तैत्तरीय प्र० १० । अनु० ३२—३५ )

भावार्थः—यो जल दुःख नाशक अमृत समान होस्।

विधिः—इनी तीन मन्त्र हरू बाट एक २ ले एक २ फेरा आचमन गर्नु, पछी तल लेखीयाका मंत्र ले बांया हस्ताञ्जलि मा पानी लीकन दांया हाथ ले अङ्ग हरू को स्पर्श गर्नु।

| मन्त्रः । | विधिः । |
| --- | --- |
| ओं वाङ् म आस्येऽस्तु । | यस् मन्त्रले मुखमा स्पर्श गर्नु । |
| ओं नसोर्मे प्राणोऽस्तु । | यस् मन्त्र ले नाख मा । |
| ओं अक्ष्णोर्मे चक्षुरस्तु । | यस् मन्त्रले दुवै आंखा मा । |
| ओं कर्णयोर्मे श्रोत्रमस्तु । | यस् मन्त्रले कान मा । |
| ओं बाह्वोर्मे बलमस्तु । | यस् मन्त्रले बाहु मा । |
| ओं ऊर्वोर्मे ओजोऽस्तु । | यस् मन्त्रले जांघ मा । |
| ओं अरिष्टानिमेऽङ्गानि तनूस्तन्वामे सह सन्तु । | यस् मन्त्रले सबै अङ्ग मा जल प्रक्षेप गर्नु । |

( पारस्कर गृ० कण्डिका ३ । सू० २५ )

विधिः—अंग स्पर्श गरी सके पछी समिधाचयन अर्थात् वेदी या पवित्र काठहरू राखनु पर्छ, फेरीः—

ओं भूर्भुवः स्वः ॥

( गोभिली गृ० प्र० १ । खं० १ । सू० ११ )

विधिः—यस् मन्त्रको उच्चारण गरी आगो लीकन अथवा घीऊको बत्ती बनाई अथवा चमसा मा कपूर जलाई तल लेखीयाका मन्त्र ले अग्न्याधान गर्नु अर्थात् वेदी मा अग्नि प्रवेश गरी दिनु ।

ओं भूर्भुवः स्वर्द्यौरिव भूम्ना पृथिवीव वरिम्णा ।
तस्यास्ते पृथिवि देवयजनि पृष्ठेऽग्निमन्नादमन्नाद्यायादधे ॥

( यजु० अ० ३ । ५ )

भावार्थः—हे सबको आधार परमेश्वर! हजूर ठुलो मा आकाश जस्तो ठुलो भई वक्स्येको छ, अरु विस्तार मा पृथिवी जस्तो फैली कन राज भै वक्स्येको छ, म हजूर लाई स्मरण गर्दै उत्तम अन्न आदि सामग्री प्राप्त गर्नाका निमित्त वेदी मा यो आगो प्रवेश गर्छु।

विधिः—यस् मन्त्र ले वेदी मा अग्नि प्रवेश गरी राम्रोरी जलाउनु।

ओं उद्बुध्यस्वाग्ने प्रतिजागृहि त्वमिष्टापूर्त्ते सꣳ सृजेथामयं च। अस्मिन्त्सधस्थे अध्युत्तरस्मिन्विश्वे देवा यजमानश्च सीदत ॥ २ ॥

( यजु० अ० १५। म० ५४ )

भावार्थः—भगवान् वाट उपदेश हुन्छ कि हे यजमान! तिमिहरू जाग, तिमि हरू सवैले—इष्ट अर्थात् वेद पढ्नु पढ़ाउनु र अतिथि सत्कार आदि सवै उत्तम काम गरुन्, अरु पूर्त्त अर्थात् पानी पिलाउने प्रवन्ध, वगीचा तथा धर्मशाला आदिको स्थापना गरून्, तिमी हरू सवै मिली जली वसुन्।

विधिः—यस् मन्त्र ले प'खालीकन अग्नि प्रदीप्त गर्नु।

## अथ समिदाधानमन्त्राः।

अब समिधा हालने मन्त्रहरू लिखो जाने छन्।

ओम् अयन्त इध्म आत्मा जातवेदस्तेनेध्यस्व वर्धस्व

चेद्ध वर्द्धय । चास्मान् प्रजया पशुभिर्ब्रह्मवर्चसेनान्नाद्येन समेधय स्वाहा ॥ इदमग्नये इदन्न मम ॥ १ ॥

( मन्त्र ब्राह्मण )

भावार्थः—हे सर्व व्यापक परमेश्वर ! जस्तो काठ मा अग्नि को प्रकाश हुन्छ उस्तै मेरो काष्ठरूप आत्मा मा हजुर प्रकाश होइ बक्स्योस्, हामी हरू लाई सदै उन्नत गरी बक्स्योस्, तथा हामी हरूको सन्तान, गाई आदि पशु, वेदविद्या र अन्न आदि सबै उत्तम २ पदार्थ हरू बढ्दै जाउन्, यो अग्नि नामक भगवान् लाई समर्पण गरे को हो, मेरो होइन ।

विधिः—यस् मन्त्र ले ८ अंगुल परिमाणको १ समिधा ( काठ ) लाई घीउ मा डुबाई कन प्रदीप्त भयेका आगो मा हाली दिनु ।

(अ) ओं समिधाग्निं दुवस्यत घृतैर्बोधयतातिथिम् । आस्मिन्हव्या जुहोतन, स्वाहा ॥ इदमग्नये-इदन्न मम ।२।

(आ) सुसमिद्धाय शोचिषे घृतं तीव्रं जुहोतन । अग्नये जातवेदसे स्वाहा॥ इदमग्नये जातवेदसे—इदन्न मम॥३

( यजु० अ० ३ मं० १-२ )

(अ) भावार्थः—परमेश्वर ले उपदेश दिंछ कि हे मनुष्य हरू हो ! अतिथि लाई जस्तै समिधा ले र घीऊ ले यस

अग्निलाई सत्कार गरी प्रदीप्त गर, अरु हवन सामग्री बाट होम गर। यो अग्नि नामक भगवान् लाई अर्पण गर्छु, यो मेरो होइन।

( आ ) भावार्थः—हे मनुष्य हरु हो। यस्ता दीप्यमान पवित्र प्रज्वलित अग्नि मा उत्तम रीत सित तपाईं राखेको घीऊ ले होम गर।

यो आत्मसमर्पण अग्नि नामक परमेश्वर लाई हो, मेरो होइन।

जाहां २ 'इदं न मम' यस्तो पद आउंछ ताहां २ यस्तै प्रकार ले अर्थ बुझी लिनु।

विधिः—इनी दुई मन्त्र ले अघी जस्तै आठ अंगुल परिमाणको एक समिधा (काठ) घीउ मा भिगाईं कन प्रदीप्त अग्नि मा हाली दिनु।

तन्त्वा समिद्भिरङ्गिरो घृतेन वर्द्धयामसि। बृहच्छोचा यविष्ठ्य स्वाहा॥ इदमग्नयेऽङ्गिरसे--इदन्न मम ॥३॥
( यजु० अ० ३ । मं० ३ )

भावार्थः—हामी हरूको नैत्यिक कर्म हो कि हामी हरू यस् संयोजक प्रदीप्त अग्नि लाई समिधा ले र घीऊ ले प्रतिदिन बढ़ाउन।

विधिः यस् मन्त्र ले अघी जस्तै परिमाणको १ समिधा अग्नि मा हाली दिनु।

प्रयोजन—समिधा लाई घीऊ मा भिगाई कन तीन फेरा

आगो मा हाल्ने प्रयोजन यो छ कि अग्नि उत्तम रीति सित प्रदीप्त होस्, जलाएको अग्नि न बुझोस्, अर्थात आरम्भ गरेको काम न बिग्रोस्, भन् उन्नति नै होस्, यस् अभिप्राय ले ऋषि महर्षि हरूले यो तीन फेरा समिधा हाल्ने नियम गरी राखेको छ:—

त्यस् पछी :—

ओम् अयन्त इध्म आत्मा०........... ॥

विधि:—पृष्ठ १३ मा लिखेका यस् मन्त्र ले ५ फेरा पढ़ी कन घीऊको ५ आहुति दिनु।

प्रयोजन—प्रज्वलित अग्नि धेरै प्रदीप्त भये र जलोस्, अर्थात् उन्नति मा पनी उन्नति नै हुनु पर्छ, कहिले पनी हानि न होस्, यस् अभिप्राय ले प्रज्वलित अग्नि मा ५ पल्ट आहुति दिने नियम हो।

तत्पश्चात्:—

## अथ जलसेचनम्।

अब वेदीको चारौं तिर अली अली पानी छाड़ी दिनु पर्छ, पानी छाड़ने मन्त्र इनी हुन :—

ओं अदितेऽनुमन्यस्व।

ओं अनुमतेऽनुमन्यस्व।

ओं सरस्वत्यनुमन्यस्व।

भावार्थ :—हे अदिति, अनुमति अरू सरस्वती नामक भगवान्! हजूरले प्रसन्न भैकन हामी हरू लाई सुबुद्धि र विद्या आनन्द सुख दी बक्स्योस।

विधि :—इनी तीन मन्त्र ले क्रमै सित वेदीको पूर्व, पश्चिम अरु उत्तर दिशा मा पानी छाड़नु ।

ओं देव सवितः प्रसुव यज्ञं प्रसुव यज्ञपतिं भगाय ।
दिव्यो गन्धर्वः केतपूः केतन्नः पुनातु वाचस्पतिर्वाचन्नः स्वदतु॥
( यजुः अ० ३० । मन्त्र १ )

भावार्थ :—हे सब संसार लाई बनाउने दानशील भगवान् ! हजूर बाट यो होमको उन्नति गरी वक्स्योस्, यज्ञको मालिक यजमानको ऐश्वर्य्य सिद्धि गरी वक्स्योस्, हे बुद्धि लाई पवित्र गर्ने परमेश्वर ! हामी हरूको बुद्धि पवित्रगरी वक्स्योस्, हजूर नै वाणी को मालिक हुन्, हजूर ले हामी हरूको वाणी मधुर रसीलो बनाई वक्स्योस् ।

विधि :—यस् मन्त्र ले वेदीको चारौं तिर जलसेचन अर्थात् पानी छाड़ी दिनु पर्छ ।

प्रयोजन—वेदीको चारौं तिर पानी छाड़ने मतलब यो छ कि वेदी मा अग्नि प्रदीप्त भैसके पछी आगा को तेज ले यता उता भूमि मा हिंडने सानु सानु कमीला आदि जीव जन्तु हरू न मरून्, तिनी हरूको रक्षा होस्, यस् विचार ले जलसेचन विधि होम गर्ना मा राखे को छ ।

तत्पश्चात् :—

## आघारावाज्याहुतिः ।

ओम् अग्नये स्वाहा ॥ इदमग्नये—इदन्न मम ॥
[ यजु० २२ । २७ ]

विधि—यस् मन्त्र ले हवन कुण्डको उत्तर भाग मा घीउ को एक आहुति दिनु।

**ओं सोमाय स्वाहा। इदं सोमाय—इदन्न मम ॥**
[ यजु० २२ । २७ ]

विधि—यस् मन्त्रले दक्षिण भाग मा प्रज्वलित समिधा माथी एक आहुति दिनु। इनी दुई आहुतिको नाम 'आघारावाज्याहुति' हो।

इनो दुवे मन्त्रको अर्थ 'अग्निहोत्रको प्रयोजन' विषय मा व्याख्यान गरी दिये को छ, त्यहीं वाट बुझी लिनु।

## आज्यभागाहुतिः

**ओम् प्रजापतये स्वाहा ॥ इदं प्रजापतये—इदन्न मम ॥**
[ यजु० अ० २२ । ३२ ]

**ओम् इन्द्राय स्वाहा ॥ इदमिन्द्राय—इदन्न मम ॥**
[ यजु० अ० २२ । २७ ]

भावार्थ—इनी दुवै आहुति प्रजा लाई पालन गर्ने समग्र ऐश्वर्य्य हुने 'प्रजापति-इन्द्र' नामक भगवान्को प्राप्ति निमित्त हो, उनैको निमित्त यो समर्पण हो, मेरो होइन।

विधि :—इनी दुवै मन्त्र ले वेदीको बीच मा दुई आहुति दिनु। इनी दुई आहुतिको नाम 'आज्यभागाहुति' हो।

प्रयोजन :—वेदीको उत्तर-दक्षिण र मध्यभाग मा आहुति दिने प्रथम ता यो मतलब छ कि वेदीको प्रज्वलित अग्नि चारौं तरफ प्रदीप्त होस्, बलेको आगो चारौं तिर बलोस्, अर्थात् उन्नति हुने बेला मा चारौं तिर आगो बलेकाझैं

चारौं तरफ बाट उन्नति होस् । दोस्रो यो मतलब हो कि चारौं तरफ उन्नति बाट उत्पन्न भयेका ऐश्वर्य्य सम्पत्ति हरू विद्याधर्मप्रचार आदि सबै उत्तम २ काम मा खर्च होस् ।

तत्पश्चात् :—

## प्रातःकालमन्त्राः ।

तल लेखीयाका मन्त्र हरू वेहान होम गर्ने हुन् :—

ओं सूर्यो ज्योतिर्ज्योतिः सूर्यः स्वाहा ॥ १ ॥
ओं सूर्यो वर्चो ज्योतिर्वर्चः स्वाहा ॥ २ ॥
ओं ज्योतिः सूर्यः सूर्यो ज्योतिः स्वाहा ॥ ३ ॥
[ यजु० अ० ३ । ९ ]

ओं सजूर्देवेन सवित्रा सजूरुषसेन्द्रवत्या
जुषाणः सूर्यो वेतु स्वाहा ॥ ४ ॥
[ यजु० अ० ३ । १० ]

भावार्थ :—संसार लाई प्रकाश गर्ने सूर्य्य आदि हरू को पनी जो भगवान् प्रकाशक भै वकस्येको छ यसकारण भगवानको नाम ( ज्योतिर्ज्योतिः ) हो। जो भगवान् ज्ञान हुने जीवात्मा हरू भन्दा पनी ठुलो ज्ञानवान भैकन राज भै वकस्येको छ । जो स्वयं प्रकाशमान भैकन सब लाई ज्ञानको प्रकाश गरी बक्सीं छ । त्यो सूर्य्य आदि लोक हरू मा व्यापक भगवान् आफ्नु कृपा कटाक्ष ले हामी हरू लाई विद्या आदि शुभ गुणको प्रकाश सदैं गरोस्, उनैका

नाम बाट हामी हरू जगत्का उपकार गर्नाका निमित्त आहुति दियेर होम गरुन्।

विधि :—इनी चार मन्त्र बाट चार आहुति दिनु। इनी चार मन्त्रमात्रै वेहान होम गर्नाका निमित्त हुन्, अरु मन्त्रहरू दुवै वेला लाई समानै छन्।

तत्पश्चात् :—

## सायंकालमन्त्राः।

तल लेखीयाका मन्त्र वेलुका होमगर्ने हुन् :—

ओं अग्निर्ज्योतिर्ज्योतिरग्निः स्वाहा ॥ १ ॥
ओं अग्निर्वर्चो ज्योतिर्वर्चः स्वाहा ॥ २ ॥
ओं अग्निर्ज्योतिर्ज्योतिरग्निः स्वाहा ॥ ३ ॥
ओं सजूर्देवेन सवित्रा सजूरात्र्येन्द्रवत्या
जुषाणो अग्निर्वेतु स्वाहा ॥ ४ ॥

[ यजु० अ० ३। मं० ९-१० ]

भावार्थ—जो ज्ञानस्वरूप ज्योतिको पनी ज्योति छ, जो अनन्त विद्यायुक्त सब लाई प्रकाश गर्ने हो, त्यो सर्वान्तर्यामी सबको हृदयमा वास गर्ने भगवान् प्रसन्न भैकन हामीहरू लाई आफ्नु दयादृष्टि ले नित्य आनन्द हुने मोक्ष सुखको दान गरोस्।

विधिः—वेलुका इनी मन्त्र हरु बाट चार आहुति दिनु। यदि बेलुका होम गर्न शक्तैन भने इनी मन्त्र हरु बाट बेहान पनी चार आहुति दिनु। तल लाइन गरी राखेका तेस्रो

मंत्र ले मनमा उच्चारण गरी तेस्रो आहुति दिनु, यो तेस्रो मंत्र भाग वेद मा छैन, चार आहुति पूर्ण गर्नाका निमित्त पहिलो मन्त्र दुहरायेको हो, इनी चार मंत्र मात्रै बेलुका होम गर्न लाई हुन, अरु मंत्र हरु दुवै वेला लाई समानै छन। त्यस पछी :—

## व्याहृतिमन्त्राः।

तल लेखीमा का मन्त्र हरु लाई 'व्याहृतिमंत्र' भन्दछन।

ओं भूरग्नये प्राणाय स्वाहा ॥

इदमग्नये प्राणाय—इदन्न मम ॥ १ ॥

ओं भुवर्वायवेऽपानाय स्वाहा ॥

इदं वायवेऽपानाय—इदन्न मम ॥ २ ॥

ओं स्वरादित्याय व्यानाय स्वाहा ॥

इदमादित्याय व्यानाय इदन्न मम ॥ ३ ॥

ओं भूर्भुवः स्वरग्निवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः स्वाहा ॥ इदमग्निवाय्वादित्येभ्यः प्राणापानव्यानेभ्यः—इदन्न मम ॥ ४ ॥

भावार्थ :—अग्नि, वायु, आदित्य नामक भगवान्को नाम स्मरण गरी यो आहुति उनै लाई समर्पण गर्छु, जस बाट संसार लाइ लाभ होस, यस कारण उनै भगवान्को इनी सामग्री पदार्थ हरु हुन, मेरो होइनन।

विधि—इनी चार व्याहृति मन्त्र बाट चार आहुति बेहान र बेलुका दिनु।

ओं आपो ज्योतिरसोऽमृतं ब्रह्मभूर्भुवः स्वरों स्वाहा ॥

भावार्थ—जो त्यो 'आप' नामक सर्व व्यापक भगवान् ज्योतिको ज्योति हुन्, रसीलो मा रसीलो हुन्, अमृतको अमृत हुन्, ठूलो मा ठूलो सर्व आनन्दमय सुखस्वरूप हुन् ।

विधि :—यस् मन्त्र ले एक घीऊको आहुति दिनु ।

तत्पश्चात् पृष्ठ ( ८ ) मा लिखेका विश्वानिदेव: आदि ८ मंत्र ले आठ आहुति दिनु । त्यस् पछी :—

## आत्मसमर्पणमन्त्रः ।

भगवान् लाई आफ्नु आत्मा समर्पण गर्ने मन्त्र:—

**ओं यदस्य कर्मणोऽत्यरीरिचं यद्वा न्यून मिहाकरम् । अग्निष्टत्स्विष्टकृद्विद्यात्, सर्वं स्विष्टं सुहुतं करोतु मे, अग्नये स्विष्टकृते, सुहुतहुते सर्वप्रायश्चित्ताहुतीनां कामानां समर्द्धयित्रे सर्वान्नः कामान्त्समर्द्धय स्वाहा ।**

इदं अग्नये स्विष्टकृते इदं न मम ।

( शतपथ कं० १४।९।४।२४ )

भावार्थ:—हे भगवान् परमेश्वर । यस् नित्य कर्मविधि मा मैले जो धेरै अथवा कम गरेको छ उस लाई उत्तम मनोकामना पूर्ण गर्ने हजूर ले नै जानी वक्स्योस्, यो उत्तम रीति सित गरेको होम मेरो मनोरथ लाई पूर्ण गर्ने साधक गरी वक्स्योस्, हजूर नै मेरो होम वाट अनेक प्रकार को मनोरथ लाई पूर्ण गर्ने होई वक्सौं छ ।

विधि:—यस् मन्त्र ले एक आहुति दिनु, यस् मन्त्रको

नाम स्विष्टकृत् मन्त्र, अरु यस् आहुतिको नाम स्विष्टकृत आहुति हो, स्विष्टकृत् अर्थात् सु—इष्ट—कृत् = उत्तम रीति सित इष्ट साधन गर्ने हो ।

## पूर्णाहुतिमन्त्रः ।

ओं पूर्णा दर्वि परापत सुपूर्णा पुनरापत । वस्नेव विक्रीणा वहा । इष मूर्ज ँ शतक्रतो स्वाहा ॥

( यजु० अ० ३।४९ )

ओं सर्वं वै पूर्ण ँ स्वाहा ।

भावार्थः—हे सर्व यज्ञ सिद्ध गर्ने परमेश्वर । घीउले पूर्ण भयाका दारु वाट जो आहुति वेदी मा गिर्दछन् ती आहुति हरू मेरो अन्न आदि र बल ऐश्वर्य्य साधन होई जाउन् ।

विधिः यस् मंत्र ले दारु भरी २ कन २-४ पल्ट आहुति दिनु ।

त्यस् पछीः—

ओं वसोः पवित्रमसि शतधारं वसोः पवित्रमसि सहस्रधारम् । देवस्त्वा सविता पुनातु वसोः पवित्रेण शतधारेण सुप्वा कामधुक्षः ॥

( यजु० अ० १।३ )

भावार्थः—यो होम सैकड़ौं हजारौं प्रकार वाट पवित्र गर्ने हो, त्यो पवित्र गर्ने होम वाट भगवान् ले हामी हरू लाई पवित्र गरोस् ।

विधिः—यस् मंत्र ले शेष बचेका घीऊ सबै कुण्ड मा छाड़ी दिनु ।

त्यस् पछीः—

ओं तनूपा अग्नेऽसि तन्वं मे पाहि, आयुर्दा

अग्नेऽसि आयुर्मे देहि, वर्चोदा अग्नेऽसि वर्च्चो मे देहि। अग्ने यन्मे तन्वा ऊनन्तन्म आपृण: ।

( यजु० अ० ३।१७ )

भावार्थ :—यो होमाग्नि शरीर रक्षक तथा आयु-बल बर्द्धक हो, मेरो आयु र बल लाई बढ़ावोस् अरू मेरो शरीर र मा जुन र बल धातु हरू कम छन् तिनी सबै लाई यो पवित्र होमाग्नि पूर्ण गरोस् ।

विधि: –यस् मन्त्र ले घृतपात्र मा बचेको घीऊ स्पर्श गरी दुवै हाथ मलीकन होमाग्नि मा तपाई रक्षा निमित्त आफ्नु अंग स्पर्श गर्नु ।

तत्पश्चात्:—

## शान्तिपाठ:–

ओं द्यौः शान्तिरन्तरिक्ष ॐ शान्तिः पृथिवी शान्तिरापः शान्तिरोषधयः शान्तिः वनस्पतयः शान्तिर्विश्वेदेवाः शान्तिर्ब्रह्म शान्तिः सर्व ॐ शान्तिः शान्तिरेव शान्तिः सामा शान्तिरेधि ॥

( यजु० अ० ३६। १७ )

भावार्थ: –हे सर्वरक्षक परमेश्वर! यस् सर्वरोग व्याधि निवारक होमाग्नि बाट प्रकाशमान सूर्य्य, आकाश, पृथिवी, जल, औषध अरू बनस्पति आदि सबै हामी हरूलाई शान्ति सुखदायक हुन् ।

ओं शान्तिः शान्तिः शान्तिः ।

इति नित्यकर्माग्निहोत्रविधिः समाप्तः ।